(६१)

**घनैकसारो वज्रात्मा सद्योजातो जगत्पतिः ।**
**गगनोद्भव स्वयम्भूः प्रज्ञाज्ञानानलो महान् ॥ २० ॥**

एउटा सार (अद्वितीय) हुनुभएका, वज्रस्वरूप हुनुभएका, तत्काल उत्पन्न हुनु भएका, जगतका स्वामि, आकाशवाटवाट उत्पत्ति हुनुभएका, स्वयं उत्पत्ति हुनु भएका, प्रज्ञा ज्ञानको महा आगो हुनुभएका ॥ २० ॥

(६२)

**वैरोचनो महादीप्तिर्ज्ञानज्योतिर्विरोचनः ।**
**जगत्प्रदीपो ज्ञानोल्को महातेजाः प्रभास्वरः ॥ २१ ॥**

(वहा) वैरोचन महातेजले युक्त, ज्ञानको ज्योति, प्रकाशमान, जगतको दीप हुनुभएका, ज्ञानको प्रकाशपुञ्ज, महातेजवान, प्रभाश्वर (हुनुहुन्छ) ॥ २१ ॥

(६३)

**विद्याराजोऽग्रमन्त्रेशो मन्त्रराजो महार्थकृत ।**
**महोष्णीषोद्भूतोष्णीषो विश्वदर्शी वियत्पतिः ॥ २२ ॥**

विद्याका राजा, मुख्य मन्त्रका स्वामी, महाअर्थ साधना गर्नु हुने मन्त्रका राजा, भहा उष्णीष, अद्भुत उष्णीष, विश्वलाई अनेक प्रकारले (ज्ञान) दर्शन गराउनु हुने, शून्यतारूपी आकाशको अधिपति हुनुहुन्छ ॥ २२ ॥

(६४)

**सर्वबुद्धात्मभावाग्र्यो जगदानन्दलोचनः ।**
**विश्वरुपी विधाता च पूज्योमान्यो महाऋषिः ॥ २३ ॥**

सवै वुद्धहरूको आत्मभावमा अग्र, जगतलाई आनन्द दिनु हुने (वहांको) आंखा, अनेक रुप उत्पत्ति गरी देखाउनुहुने विधाता, सवैले पूजा मान सत्कार गर्न योग्य, एक महाऋषि हुनुहुन्छ ॥ २३ ॥

(६५)

**कुलत्रयधरो मन्त्री महासमयमन्त्रधृक् ।**
**रत्नत्रयधरः श्रेष्ठस्त्रियानोत्तमदेशकः ॥ २४ ॥**

तीनवटा कुल (काय, वाक, चित्त) धारण गरी, गुह्यमन्त्र र महासमय (गुहयमन्त्रको शील) धारण गरी रहनुभएका, त्रिरत्न धारण गर्नेमा श्रेष्ठ र त्रियान उपदेश दिनुहुनेमा उत्तम हुनुहुन्छ ॥ २४ ॥

(६६)

**अमोघपाशो विजयी वज्रपाशो महाग्रहः ।**
**वज्रांकुशो महापाशः...................॥ २५ ॥**

अमोघपाश हुनाले विजयी हुनुहुन्छ, वज्रपाश हुनाले महान संग्राहक हुनुहुन्छ, वज्रांकुश भएकोले महापाश समाई रहनु हुने हुनुहुन्छ ॥ २५ ॥

इति सुविशुद्धधर्मधातुज्ञानगाथाः पादोन पंचविंशतिः ॥

(६७)

**वज्रभैरवभीकरः ।**

**क्रोधराट् षण्मुखो भीमः षण्नेत्रः षड्भुजो बली ।**
**दंष्ट्राकराल कंकालो हलाहलः शताननः ॥ १ ॥**

अत्यन्त भयंकर स्वभावको वज्रभैरव, क्रोधका राजा, छ वटा मुख, छ वटा आंखा हुनुभएका, छ वटा हात, महावलवान, पुनः हाडको गहना लगाई दाह्रा किटेर रहनुभएका, एक सयवटा मुख भएको हलाहल हुनु हुन्छ ॥१॥

(६८)

**यमान्तको विघ्नराजो वज्रवेगो भयंकरः ।**
**विघुष्टवज्रो हृद्वज्रो मायावज्रो महोदरः ॥ २ ॥**

यमान्तक, विघ्न का राजा, वज्रवेगले, भयंकर रूप, प्रख्यात भएका वज्र, हृदयमा वज्र, मायास्वरूपको वज्र, महान उदर (पेट) हुनुभएका ॥ २ ॥

(६९)

**कुलिशेशो वज्रयोनिर्वज्रमण्डो नभोपमः ।**
**अचलैकजटाटोपो गजचर्मपटार्द्रधृक् ॥ ३ ॥**

कुलिश (अश्त्र) को स्वामि, वज्रवाट जन्म हुनुहुने, वज्रको सार, हृदय आकाश समान, नचल्ने, एक अद्वितीय, केशहरूको जटा हुनुभएका, हात्तीको छाला वस्त्र लगाएको हुनाले भिजिएको हुनुहुन्छ ॥ ३ ॥

(७०)

**हाहाकारो महाघोरो हीहीकारो भयानकः ।**
**अट्टहासो महाहासो वज्रहासो महारवः ॥ ४ ॥**

हाहा भनी महाघोर शब्दले, हिंहीं कार गरी भयानक रूपले कराउँदै, अट्टहास गरी ठूलो हांसो गर्दै, वज्रहास भन्ने ठूलो चिच्याहत गर्दै ॥ ४ ॥

(७१)

**वज्रसत्त्वो महासत्त्वो वज्रराजो महासुखः ।**
**वज्रचण्डो महामोदो वज्रहुंकारहुंकृतिः ॥ ५ ॥**

वहां वज्रसत्व महासत्त्व, महासुखले युक्त वज्रराज, महाखुशी भई वज्रवेगले, वज्रहुंकार को हुंकार (चतुरानन्दको ध्यान) कार्य गर्नुहुन्छ ॥ ५ ॥

(७२)

**वज्रबाणायुधधरो वज्रखड्गो निकृन्तनः ।**
**विश्ववज्रधरो वज्री एकवज्री रणञ्जहः ॥ ६ ॥**

वहां वज्रखड्ग र वज्रवाण आदि नाना प्रकारका अस्त्र धारण गरी (क्लेशवासना) बाँकी नराखी नाश गरी, विश्ववज्र धारण गरि, वज्र धारण गरी, एकमात्र वज्र (अद्वयज्ञान) द्वारा संग्राममा जित्नुहुन्छ ॥ ६ ॥

(७३)

**वज्रज्वालाकरालाक्षो वज्रज्वालाशिरोरुहः ।**
**वज्रावेशो महावेशः शताक्षो वज्रलोचनः ॥ ७ ॥**

वज्रज्वालाझै भयंकर वहांको चक्षु, शिरको सबै केशहरु अग्नि ज्वाला हुने वहा वज्रावेश महावेश हुनुहुन्छ, वज्रचक्षु स्वभावको एकसय आँखाहुने हुनुहुन्छ ॥ ७ ॥

(७४)

**वज्ररोमांकुरतनुर्वज्ररोमैकविग्रहः ।**
**वज्रकोटिनखारम्भो वज्रसारघनच्छविः ॥ ८ ॥**

उहाँको शरीरको रौं सबै वज्रझै पुलकित, वज्रझै रौंलेयुक्त एक अद्वितीय शरीर उहाँको नङ वज्रको चुच्चो भई, शरीरको छाला पनि अभेद्य, वज्रजस्तै सार छ ॥८ ॥

(७५)

**वज्रमालाधरः श्रीमान् वज्राभरणभूषितः ।**
**हाहाट्टहासो निर्घोषो वज्रघोषः षडक्षरः ॥ ९ ॥**

वहाँले वज्रमाला पहिरेर अति शोभायमान भई, वज्र आभूषण लगाई रहनु भएको छ, फेरि हाँ हाँ गरी अट्टहास गरी हाँसेर, षड्क्षर वज्रझै शब्द निकाल्नु हुन्छ ॥ ९ ॥

(७६)

**मञ्जुघोषो महानादस्त्रैलोक्यैकरवो महान् ।**
**आकाशधातुपर्यन्तघोषो घोषवतां वरः ॥ १० ॥**

मञ्जुघोषको कोमल स्वरले, उच्च शब्द निकाली, तीनै लोकमा अद्वितीय शब्द निकालि महान हुनु भएका, आकाश धातु पर्यन्तसम्म शब्द पठाई धर्म फैलाउनु हुने, धर्म शब्द सुनाउनेहरू मध्ये उत्तम हुनुहुन्छ ॥ १० ॥

आदर्शज्ञानगाथाः पादोनदश ॥

# प्रत्यवेक्षण ज्ञानगाथा

(७७)

**तथताभूतनैरात्म्यभूतकोटिरनक्षरः ।**
**शून्यतावादिवृषभो गम्भीरोदारगर्जनः ॥ १ ॥**

वहां तथतामा हुनुहुन्छ, नैरात्म्य स्वभावको, यथाभूत स्वभावको, अनक्षर हुनुहुन्छ । शून्यतावादिजनमध्ये वृषभ समान भई, गंभिर (शून्यता) र उदार करुणा) धर्मका ठूलो गर्जन गर्नु हुन्छ ॥ १ ॥

(७८)

**धर्मशंखो महाशब्दो धर्मगण्डी महारणः ।**
**अप्रतिष्ठितनिर्वाणो दशदिग्धर्मदुन्दुभिः ॥ २ ॥**

"धर्म शंख" रूपी महाशव्द फुकेर, अनुपम महासुख दिने "धर्मगण्डी" वजाउनु हुन्छ, "अप्रतिस्थित निर्वाण" भन्ने (भवसंसार र शान्तनिर्वाणमा दुवैमा नवस्ने धर्म शव्दको दुन्दुभि दश दिशामा सुनिन्छ ॥ २ ॥

(७९)

**अरुपो रुपवानग्र्यो नानारुपो मनोमयः ।**
**सर्वरुपावभासश्रीरशेष प्रतिबिम्बधृक् ॥ ३ ॥**

रूप नहुने र रूप हुनेहरूमध्ये उत्तम हुनु भएका, अनेकमनोमय रूप देखाउनु हुने, सबै रुपमा श्री समान हुनु भइ, ऐनामा प्रतिविम्व झै अनन्त हुनु हुन्छ ॥ ३ ॥

(८०)

**अप्रधृष्यो महेशाख्यस्त्रैधातुकमहेश्वरः ।**
**समुच्छितार्यमार्गस्थो धर्मकेतुर्महोदयः ॥ ४ ॥**

वहां मञ्जुघोष, कसैले पनि छुन नसक्ने, प्रख्यात, त्रिधातुका महान स्वामि, यो आर्यमार्गमा अत्यन्त अगाडि स्थित भइ, धर्मरूपी ध्वज फैलाउनु हुन्छ ॥ ४ ॥

(८१)

**त्रैलोक्यैककुमाराङ्गः स्थविरो वृद्धः प्रजापतिः ।**
**द्वात्रिंशल्लक्षणधरः कान्तस्त्रैलोक्यसुन्दरः ॥ ५ ॥**

"भट्टारक मञ्जुघोष" को शरीर त्रिलोकमा एक अद्वितीय कुमारको रूपको हुनुहुन्छ, तर वहां स्थविर बृद्ध प्रजापति हुनु हुन्छ । महापुरुषको ३२ लक्षण धारण गरी तीनै लोकमा अतिसुन्दर राम्रो तेजवान हुनु हुन्छ ॥ ५ ॥

(८२)

**लोक ज्ञानगुणाचार्यो लोकाचार्यो विशारदः ।**
**नाथस्त्राता त्रिलोकाप्तः शरणं तायी निरुत्तरः ॥ ६ ॥**

लोकमा गुण तथा ज्ञानको आचार्य भई कुनै किसिमको भय डर नभएका वहां लोकको आचार्य हुनुहुन्छ । फेरि त्रिलोकको नाथ भई, रक्षक, विश्वसनीय हुनु भइ, (दुःखीहरुलाई) शरण दिनेमा, अनुत्तर महापुरुष हुनु हुन्छ ॥ ६ ॥

(८३)

**गगनाभोग संभोगः सर्वज्ञज्ञानसागरः ।**
**अविद्याण्डकोश संभेत्ता भवपञ्जरदारणः ॥ ७ ॥**

वहां मञ्जुघोषको आफ्नो सुखानुभव अनन्त आकाश समाननै छ, वहां सर्वज्ञ ज्ञानको सागरनै हुनु हुन्छ, अविद्याको अण्डकोश फुटाई भवजाल च्छेदन गर्ने हुनु हुन्छ ॥ ७ ॥

(८४)

**शमिताशेषसंक्लेशः संसारार्णवपारगः ।**
**ज्ञानाभिषेकमकुटः सम्यकसंबुद्धभूषणः ॥ ८ ॥**

क्लेश शेप बाँकि नराखीकन शान्तपारी, संसार सागरबाट पार गरि जानु भएको छ, ज्ञानको अभिपेक को मुकुट लगाइ, सम्यकसंबुद्ध (ज्ञान)ले अलंकृत हुनु भएको छ ॥ ८ ॥

(८५)

**त्रिदु:खदु:खग(श)मनस्त्रयन्तोऽनन्तास्त्रिमुक्तिगः ।**

**सर्वावरणविनिर्मुक्त आकाशमतांगतः ॥ ९ ॥**

तीन प्रकारको दु:खलाई शान्त पारी तथा समूल नष्ट गरि, तीनै प्रकारको मोक्षको अन्तसम्म पुगि,. अन्त्यमा सबै आवरणबाट मुक्त भइ, आकाश झैं समतामा रहनु भएको छ ॥ ९ ॥

(८६)

**सर्वक्लेशमलातीतस्त्र्यध्वानध्वगतिं गतः ।**
**सर्वसत्त्व महानागो गुणशेखरशेखरः ॥ १० ॥**

सबैक्लेशको मैलबाट पार गरी, वहांले अतीत, अनागत, प्रत्युत्पन्न काल र (त्यसको नि:स्वभाव) अकाललाई राम्ररी अवबोध गर्नु भएको छ। सबै सत्त्वहरू मध्ये महानाग हुनु हुन्छ, गुणको शिखर प्राप्त गर्नेहरू मध्ये पनि शिखरमा पुग्नु भएको छ ॥ १० ॥

(८७)

**सर्वोपधिविनिर्मुक्तो व्योमवर्त्मनि सुस्थितः ।**
**महाचिन्तामणिधरः सर्वरत्नोत्तमो विभुः ॥ ११ ॥**

सबै संक्लिष्ट शरीरबाट विमुक्त भइ आकाश झैं (शून्यता)मा सुप्रतिष्ठित हुनुहुन्छ, महा चिन्तामणिरत्न धारण गरी सबै प्रकारको उत्तमरत्नहरुको स्वामि हुनुहुन्छ ॥ ११ ॥

(८८)

**महाकल्पतरुः स्फीतो महाभद्रघटोत्तमः ।**
**सर्वसत्त्वार्थकृत् कर्ता हितैषी सत्त्ववत्सलः ॥ १२ ॥**

(प्राणीहरूका हितको लागि) फैलिरहेको महाकल्पवृक्ष र महाभद्रकलशझैं हुनुहुन्छ। सबैप्राणीहरुको हितकर्ता भई, सत्त्वहरुको हितैषी भइ स्नेह राख्नु हुन्छ ॥ १२ ॥

(८९)

**शुभाशुभज्ञः कालज्ञः समयज्ञः समयी विभुः ।**
**सत्वेन्द्रियज्ञो वेलज्ञो विमुक्तित्रयकोविदः ॥ १३ ॥**

प्राणीहरुको शुभ-अशुभको ज्ञाता भइ, कालज्ञः समयको ख्याल राख्ने, समयको स्वामि हुनु हुन्छ,प्राणीहरुको इन्द्रियलाई बुझ्ने, त्रिबोधिको ज्ञाता हुनुहुन्छ ॥ १३ ॥

(९०)

**गुणी गुणज्ञो धर्मज्ञः प्रशस्तो मंगलोदयः ।**
**सर्वमंगलमांगल्य कीर्त्तिर्लक्ष्मीर्यशः शुभः ॥ १४ ॥**

गुणले युक्त भइ गुणको महत्व थाहापाउने, धर्मज्ञ भई, प्रशस्त मङ्गल को मूल श्रोत भइ, सवै मङ्गलहरु ल्याउने मङ्गलकारक भई, यस्तो यश कीर्ति पाउनु मङ्गल लाभ नै हो ॥ १४ ॥

(९१)

**महोत्सवो महाश्वासो महानन्दो महारतिः ।**
**सत्कारः सत्कृतिर्भूतिः प्रमोदः श्रीर्यशस्पतिः ॥ १५ ॥**

महा उत्सव भइ, महानन्दको ठूलो श्वास लिई, महासुख अनुभव गरी, सम्पूर्ण मान-सम्मान गर्न योग्य भइ, महाप्रसन्न भइ, यशको स्वामी हुनुहुन्छ ॥ १५ ॥

(९२)

**वरण्यो वरदः श्रेष्ठः शरण्य शरणोत्तमः ।**
**महाभयारिप्रवरो निःशेष भयनाशनः ॥ १६ ॥**

उत्तम वस्तु भएको हुनाले उत्तम वस्तु नै दान दिनु हुन्छ र श्रेष्ठ हुनु हुनु हुन्छ, शरणयोग्य भइ, शरणमध्ये उत्तम हुनु हुन्छ, शत्रुभय समाप्त पार्नेमा अग्र, निःशेष रुपले भय नाशक हुनुहुन्छ ॥ १६ ॥

(९३)

**शिखी शिखण्डी जटिलो जटी मौण्डी किरीटिमान् ।**
**पंचाननः पंचशिखः पंचचीरकशेखरः ॥ १७ ॥**

शिखा धारण गर्ने शिखण्डी, जटा धारण गर्ने जटिल,पांचवटा मुख भइ, शिरैपिच्छे पाँचवटा जटा बाँधेर, पांचवटै जटामा सुगन्धित वास आउने फूल सिउरेर मुकुट लगाउनु भएको ॥ १७ ॥

(९४)

**महाव्रतधरी मौञ्जी ब्रम्हचारी व्रतोत्तमः ।**
**महातपास्तपोनिष्ठः स्नातको गौतमोऽग्रणीः ॥ १८ ॥**

मौञ्जी (चूडाकर्म-प्रव्रजित) भई, महाव्रत धारण गर्नुहुने, व्रत मध्ये उत्तम व्रह्मचारी (भिक्षु) धारण गरी, महातपस्या पूर्ण गर्नुहुने, सिद्धार्थ गौतम जस्तै स्नातक (सुचिव्रत धारण गर्नुहुने) हुनुहुन्छ ॥ १८ ॥

(९५)

**ब्रम्हविद् ब्राम्हणो ब्रम्हा ब्रम्हनिर्वाणमाप्तवान्ः ।**
**मुक्तिर्मोक्षो विमोक्षांगो विमुक्तिः शान्तता शिवः ॥ १९ ॥**

ब्रम्ह वुझ्ने हुने भएकोले ब्रम्हा हुनुहुन्छ, ब्राम्हणको रूप धारणगर्ने ब्रम्ह निर्वाण (अप्रतिस्थित निर्वाण) प्राप्त गर्नु हुने । संसारवाट मुक्ति र मोक्ष प्राप्त गरि, मोक्ष शरीर वाट विमुक्ति (विमोक्षांगो) हुने शान्तता निर्वाण भई देखाउनु हुने ॥ १९ ॥

(९६)

**निर्वाणं निर्वृतिः शान्तिः श्रेयो निर्याणमन्तकः ।**
**सुखदुःखान्तकृन्निष्ठा वैराग्यमुपधिक्षयः ॥ २० ॥**

निर्वाण निवृत्ति शान्ति (अप्रतिष्ठित निर्वाण) र श्रेष्ठतम् मङ्गलकारक निर्वाण हुने र सुख दिने एवं दुःख लाइ अन्त गर्ने पर्यन्तमा वैराग्य भई उपाधिक्षय (निर्वाण प्राप्त गरी देखाउनु हुने ॥ २० ॥

(९७)

**अजयोऽनुपमोऽव्यक्तो निराभासो निरञ्जनः ।**
**निष्कलः सर्वगो व्यापी सूक्ष्मो बीजमनाश्रवः ॥ २१ ॥**

अजय, अनुपम (उपमा नभएका) व्यक्त नभएका, आभास नभएका, राग विहिन, परिवर्तन नहुने, सर्वव्यापी सूक्ष्मवीज, अनास्रव भई सवैवाट मुक्त हुनुभएका ॥ २१ ॥

(९८)

**अरजो विरजो विमलो वान्तदोषो निरामयः ।**
**सुप्रबुद्धो विबुद्धात्मा सर्वज्ञः सर्ववित्परः ॥ २२ ॥**

(क्लेशावरणरूपी) धूलो नाश गरेकोले, विशेष रूपले धूलो विहिन भइ, शुद्ध निर्मल भई, प्राचित्त दोषवाट मुक्त हुनाले, राम्ररी विउंझेका, पूर्णरूपले अविद्यावाट विउँझेर, सर्वज्ञ हुनु भएका, सबै जान्नेमा परम हुनुहुन्छ ॥ २२ ॥

(९९)

**विज्ञानधर्मतातीतो ज्ञानमद्वयरुपधृक् ।**
**निर्विकल्पो निराभोगस्त्र्यध्वसंबुद्धकार्यकृत् ॥ २३ ॥**

विज्ञान र धर्मता दुवै पार गरी,अद्वय ज्ञान धारण गरी, निर्विकल्प भइ, सहजरुपले त्रिकालका वुद्धहरुले गरिने कार्य गर्छन ॥ २३ ॥

(१००)

**अनादिनिधनो बुद्ध आदिबुद्धो निरन्वयः ।**
**ज्ञानैकचक्षुरमलो ज्ञानमूर्त्तिस्तथागतः ॥ २४ ॥**

आदि अन्त नभएका वुद्ध, हेतुवाट उत्पन्न हुनु नपर्ने आदिवुद्ध, दाग नभएको ज्ञानको एउटा आँखा भनिएको छ। ज्ञान मूर्ति तथागत भनी प्रख्यात हुनुभएको छ ॥ २४ ॥

(१०१)

**वागीश्वरो महावादी वादिराड् वादिपुंगवः ।**
**वदतां वरो वरिष्ठो वादिसिंहोऽपराजितः ॥ २५ ॥**

वाक्को इंश्वर महावादि भई, वाद गर्नेहरुमा राजा भई, वादिहरूमा अग्र तथा श्रेष्ठ, वादिमा सिंह समानभई अरुले जित्न नसक्ने हुनुभएका ॥ २५ ॥

(१०२)

**समन्तदर्शी प्रामोद्यस्तेजोमाली सुदर्शनः ।**
**श्रीवत्सः सुप्रभो दीप्तिर्भाभासुरकरद्युतिः ॥ २६ ॥**

सर्वैतिरवाट देख्न, प्रशन्न स्वभाव भइ, अति सुन्दर तेजको मालाले, श्रीवत्सको प्रभाले प्रज्ज्वलित भएको, हातमा प्रज्ज्वलित रश्मि चम्कदै ॥ २६ ॥

(१०३)

**महाभिषग्वरः श्रेष्ठः शल्यहर्ता निरुत्तर ।**
**अशेषभैषज्यतरुः क्लेशब्याधिमहारिपुः ॥२७ ॥**

महाश्रेष्ठोत्तम वैद्य भई उत्तम औषधि दिई भएभग्का रोगको औषधिको महाद्रुम वृक्षसमान भई क्लेश रोगका महाशत्रु हुनुभएका ॥ २७ ॥

(१०४)

**त्रैलोक्यतिलकः कान्तः श्रीमान्नक्षत्रमण्डलः ।**
**दशदिग्व्योमपर्यन्तो धर्मध्वजमहोच्छ्य ॥ २८ ॥**

तीनै लोकमा (टीका झैं) श्रीमान् नक्षत्र मण्डलाकार समान चम्केका दशदिशाका आकाश धातु पर्यन्तसम्म (लोकधातु) धर्मको ध्वजा फहराउनुहुने ॥ २८ ॥

(१०५)

**जगच्छत्रैकविपुलो मैत्रीकरुणमण्डलः ।**
**पद्मनृर्त्येश्वरः श्रीमान् रत्नच्छत्रो महाविभुः ॥ २९ ॥**

जगतका लागी मैत्री करुणाको विपुलछत्र भई, श्री पद्मनृत्येश्वर समान सर्वव्यापी भई महारत्नछत्र को महास्वामि हुनुहुन्छ ॥ २९ ॥

(१०६)

**सर्वबुद्धमहाराजः सर्वबुद्धात्मभावधृक ।**
**सर्वबुद्धमहायोगः सर्वबुद्धैकशासनः ॥ ३० ॥**

सवै वुद्धहरूको महाराजा हुनुभएका, सवैवुद्धहरूको प्रतिरूप धारण गरी रहनु भएका, सवै वुद्धहरूको महायोग गरी, सवैवुद्धहरूको एक शासन हुनुभएका ॥ ३० ॥

(१०७)

**वज्ररत्नाभिषेकश्रीः सर्वरत्नाधिपेश्वर ।**
**सर्वलोकेश्वरपतिः सर्ववज्रधराधिपः ॥ ३१ ॥**

वज्ररत्न अभिषेक प्राप्त भएकोले श्री शोभायुक्त भई, सवै रत्नका अधिपति लोकेश्वर हुनुभएका, सवै लोकेश्वरहरुका अधिपति हुनुभएका, सवैवज्रधरहरूका स्वामि हुनु भएका ॥ ३१ ॥

(१०८)

**सर्वबुद्धमहाचित्तः सर्वबुद्धमनोगतिः ।**
**सर्वबुद्धमहाकायः सर्वबुद्धसरस्वती ॥ ३२ ॥**

सवै वुद्धहरूका महाचित्त भई, सबै बुद्धहरूको हृदयमा बस्नु हुने, फेरी सबै वुद्धका महान काय (शरीर) भई तथा महान वचन सरस्वती भै भएको ॥ ३२ ॥

(१०९)

**वज्रसूर्यो महालोको वज्रेन्दुविमलप्रभः ।**
**विरागादिमहारागो विश्ववर्णोज्ज्वलप्रभः ॥ ३३ ॥**

महातेज प्रकाश गर्ने (वज्र सूर्य) र निर्मल शान्त तेज हुनुभएका (वज्रचन्द्र) समान हुनुभएका, विरागादि महाराग गरी अनेक रंगका रश्मिको तेज निकाल्नु हुने ॥ ३३ ॥

(११०)

**संबुद्धवज्रपर्यको बुद्धसंगीति धर्मधृक् ।**
**बुद्धपद्मोद्भवः श्रीमान् सर्वज्ञज्ञानकोषधृक् ॥ ३४ ॥**

सवुद्धको वज्रपर्यंक आसनमा वसी, वुद्धधर्मका संगीति धारण गरी, कमलको फूलवाट उत्पन्न श्रीमान वुद्धभैं सर्वज्ञ ज्ञानको कोष धारण गरिरहनु भएको ।

(१११)

**विश्वमायाधरो राजा बुद्धविद्याधरो महान् ।**
**वज्रतीक्ष्णो महाखड्गो विशुद्धः परमाक्षरः ॥ ३५ ॥**

अनेक माया धारण गर्नु हुने महान् राजा, सवै वुद्धहरूका विद्यामन्त्र धारण गर्नुहुने, वज्र समान तीक्ष्ण महाखडग, विशुद्ध परमाक्षर (प्रज्ञापारमिता) धारण गर्नुहुने ॥ ३५ ॥

(११२)

**दुःखच्छेद महायानो वज्रधर्ममहायुधः ।**
**जिनजिग्वज्रगाम्भीर्यो वज्रबुद्धिर्यथार्थवित् ॥ ३६ ॥**

महायानको वज्रधर्मरूपी आयुध प्रयोगले दुःखलाइ नाश गर्ने, जिनपुत्रहरूको गंभीर (शून्यता) धर्म र वज्रवुद्धि ले यथार्थ जान्ने भएकोले ॥ ३६ ॥

(११३)

**सर्वपारमितापूरी सर्वभूमिविभूषणः ।**
**विशुद्धधर्मनैरात्म्यः सम्यग्ज्ञानेन्दु हृत्प्रभः ॥ ३७ ॥**

सबै पारमिता परिपूर्ण गरी, दश भूमि इत्यादि सबै गुण अलंकारले युक्त हुनुभएका, विशुद्ध धर्म नैरात्मा सम्यक ज्ञान, चन्द्रमाको जस्तो प्रभा (बोधिचित्त भएको) ॥ ३७ ॥

(११४)

**मायाजालमहोद्योगः सर्वतन्त्राधिपः परः ।**
**अशेषवज्रपर्यंको निःशेषज्ञानकायधृक् ॥ ३८ ॥**

मायाजालको मार्गमा महाउद्योग गरी, तन्त्र सबैको अधिपति परम श्रेष्ठ हुनुभएका, पूर्ण वज्रासन गरी, ज्ञानकायादि निःशेष रूपले धारण गरेका ॥ ३८ ॥

(११५)

**समन्तभद्रः सुमति क्षितिगर्भोजगद्धृतिः ।**
**सर्वबुद्धमहागर्भो विश्वनिर्माणचक्रधृक् ॥ ३९ ॥**

सुमति हुनु भएका समन्तभद्र बोधिसत्त्व र जगतलाई धारण गर्ने क्षितिगर्भ, फेरि सबै बुद्धहरूको हृदय समान, विश्व निर्माण चक्र धारण गर्ने ॥ ३९ ॥

(११६)

**सर्वभावस्वभावाग्रः सर्वभावस्वभावधृक ।**
**अनुत्पादधर्मो विश्वार्थः सर्वधर्मस्वभावधृक् ॥ ४० ॥**

सबै भावको स्वभाव मध्ये श्रेष्ठोत्तम (स्वभावशून्य) हो । सबै भावको स्वभाव (शून्यता) धारण गरी, अनुत्पाद धर्मको अनेक प्रयोजनद्वारा (प्राणी हितार्थ व्यवहारतः) सबै धर्मको स्वभाव धारण गर्न हुने ॥ ४० ॥

(११७)

**एकक्षणमहाप्राज्ञः सर्वधर्माववोधधृक्**
**सर्वधर्माभिसमयो भूतान्तमुनीरग्रधीः ॥ ४१ ॥**

एकै क्षणमा महाप्रज्ञाद्वारा सबै धर्मको स्वभाव अववोध गर्ने, सबै धर्मको स्वभाव अववोध गर्ने, परमार्थ मुनिको उत्तम वुद्धि जान्ने ॥ ४१ ॥

(११८)

**स्तिमितः सुप्रसन्नात्मा सम्यक्संबुद्धबोधिधृक् ।**
**प्रत्यक्षस्सर्वबुद्धानां ज्ञानार्चिः सुप्रभास्वरः ॥ ४२ ॥**

कहिले पनि चञ्चल नभएको सुप्रसन्न शरीर भई अनुत्तर संबोधि धारण गर्नुहुने, सबै बुद्धहरूको ज्ञान साक्षात्कार गरी ज्ञानको रश्मि तथा प्रभाश्वर धारण गर्नु भएको छ ॥ ४२ ॥

ईति प्रत्यवेक्षणज्ञानगाथाः द्वाचत्वारिंशत् ॥

(११९)

**इष्टार्थः साधक परः सर्वापाय विशोधकः ।**
**सर्वसत्त्वोत्तमो नाथः सर्वसत्त्वप्रमोचकः ॥ १ ॥**

प्राणीहरूको इच्छाअनुसार उत्तम अर्थ साधन गर्नुहुने, सबै दुर्गती शोधन गर्ने उहाँ सबै प्राणीहरूलाई त्राण दिने नाथ हुनुहुन्छ ॥ १ ॥

(१२०)

**क्लेशसंग्रामशुरैकः अज्ञानरिपुदर्पहा ।**
**धी श्रृंगारधरः श्रीमान् वीरबीभत्सरुपधृक ॥ २ ॥**

क्लेशसंग संग्राम गर्ने एक शूरवीर, अज्ञानरूपी शत्रुको घमण्ड लाई तोड्ने, यी प्राणीहरूलाई दिव्य स्वरूपले श्रृङ्गार गरी शोभाले युक्त भई देखाउने, साथै वीर भयंकर स्वरुप धारण गर्ने ॥२॥

(१२१)

**बाहुदण्डशताक्षेपः पदनिक्षेपनर्त्तनः ।**
**श्रीमच्छत भुजाभोगो गगनाभोगनर्त्तनः ॥ ३ ॥**

सय प्रकारले हात हल्लाई, गोडा चलाई पद लिई नाच्ने, श्री शोभायमानयुक्त आकाशमा व्यापक भइकन, सय हात देखाइ नाच्नु हुन्छ ॥ ३ ॥

(१२२)

**एकपादतलाक्रान्तो महीमण्डतले स्थितः ।**
**ब्रम्हाण्डशिखराक्रान्तः पादांगुष्ठनखेस्थितः ॥ ४ ॥**

यो पृथ्वी मण्डलमा एक पाउले टेकी, फेरि एक पाउको बुढी औंलाको नङले यो ब्रह्माण्डको शिखर देखि टेकेर थिची राख्नु हुन्छ ॥ ४ ॥

(१२३)

**एकार्थोऽद्वयधर्मार्थः परमार्थोविनश्वरः ।**
**नाना विज्ञप्तिरुपार्थश्चित्तविज्ञानसन्ततिः ॥ ५ ॥**

दुईवटा (अर्थ) नभएको अद्वयधर्म, एक स्वभावको, परमार्थ भएकोले अविनाशी, फेरि अनेक रूप वर्ण देखाउनुको अर्थ (कारण) चित्त र विज्ञानको सन्तान (स्वभाव) हो ॥ ५ ॥

(१२४)

**अशेषभावार्थरतिः शून्यतारतिग्रधीः ।**
**भवरागाद्यतितश्च भवत्रयमहारतिः ॥ ६ ॥**

शेष नरहने गरी भावमा आनन्द लिइ, शून्यतामा (आनन्द) रमाउनु हुने वहांको वुद्धि, भवको रागवाट पार गरी, त्रिभवमा आनन्द मानी वस्नुहुन्छ ॥ ६ ॥

(१२५)

**शुद्धः शुभ्राभ्रधवलः शरच्चन्द्रांशु सुप्रभः ।**
**बालार्कमण्डलच्छायो महारागनखप्रभः ॥ ७ ॥**

सेतो वादल भ्रै शुद्ध सेतो, शरद ऋतुको चन्द्रमाभ्रैं चम्केको रश्मि, प्रभातकालिन सूर्योदय भ्रै सुन्दर, रातो तेजिलो वर्णको नंग हुनुहुन्छ ॥ ७ ॥

(१२६)

**इन्द्रनीलाग्रसञ्चीरो महानीलकचाग्रधृक् ।**
**महामणिमयूखश्रीर्बुद्धनिर्माणभूषणः ॥ ८ ॥**

उष्णीपको मुकुटमा ईन्द्रनील जडान भएको, जटाको केशको टुप्पोमा महानीलमणि लगाउनु भएको, उक्त महामणिवाट रश्मि निकालेर निर्माणकायबुद्धहरुले अलंकृत गर्नु हुन्छ ॥ ८ ॥

(१२७)

**लोकधातुशताकम्पी ऋद्धिपादमहाक्रमः ।**
**महास्मृतिधरस्तत्त्वश्चतुःस्मृतिसमाधिराट् ॥ ९ ॥**

ऋद्धिपादको वल (पराक्रम) ले सयलोकधातुमा कम्पन गरी, महास्मृति उपस्थानरुपि तत्व धारण गर्नुभई चतुः स्मृति प्रस्थानका समाधि राजा हुनुहुन्छ ॥ ९ ॥

(१२८)

**बोध्यंगकुसुमोवस्तथागतगुणोदधिः ।**
**अष्टांगमार्गनयवित् सम्यक्संबुद्धमार्गवित् ॥ १० ॥**

पुष्पको सुगन्धभ्रै वोध्यङ्ग प्राप्तगरी, तथागतको गुणरूपी सागर धारण गर्दै, अष्टाङ्गमार्ग भावनामा विज्ञ भइ, सम्यक सम्वुद्ध मार्ग जान्नु हुन्छ ॥ १० ॥

(१२९)

**सर्वसत्त्वमहासंगो निसंगो गगनोपमः ।**
**सर्वसत्त्वमनोजातः सर्वसत्त्वमनोजवः ॥ ११ ॥**

सवै प्राणीहरूलाई (एक्लो छोरालाई झैं) स्नेहगरी, आकाश झैं अलिप्त भइ, सवै प्राणीको मनवाट उठी, सवै प्राणीहरूको मनको वेग भएको हुनाले ॥ ११ ॥

(१३०)

**सर्वसत्त्वेन्द्रियार्थज्ञः सर्वसत्त्वमनोहरः ।**
**पञ्चस्कन्धार्थत्त्वज्ञ पञ्चस्कन्धविशुद्धधृक् ॥ १२ ॥**

सवै प्राणीको इन्द्रिय साक्षात्कारवाट वुझि, सवै प्राणीको मनलाई जित्दै पञ्चस्कन्धको अर्थ वुझि, पञ्चस्कन्ध विशुद्ध अर्थ धारण गर्दै ॥ १२ ॥

(१३१)

**सर्वनिर्याणकोटिस्थः सर्वनिर्याणकोविदः ।**
**सर्वनिर्याणमार्गस्थः सर्वनिर्याणदेशकः ॥ १३ ॥**

सवै मुक्तिमार्ग अन्तमा पुगी सवै मुक्तिमार्गमा विज्ञ भइ, सवै मुक्तिमार्ग अनुशरण गरी सवै मुक्तिमार्गका देशना गर्नु हुन्छ ॥ १३ ॥

(१३२)

**द्वादशांगभवोत्खातो द्वादशाकारशुद्धधृक् ।**
**चतुःसत्यनयाकारः अष्टज्ञानाववोधधृक् ॥ १४ ॥**

द्वादश अङ्ग भएको भवको मूल (अविद्याको मूल)लाई नष्ट गर्दै, द्वादशाकारको शुद्धरूप (प्रतीत्यसमुत्पाद) लाई धारण गर्दै, चतुसत्यको आकार वनाउनु हुने, अष्टज्ञान (मार्ग र फल) अववोध गर्दै ॥ १४ ॥

(१३३)

**द्वादशाकारसत्यार्थः षोडशाकारतत्ववित् ।**
**विंशत्याकारसंबोधिर्विबुद्धः सर्ववित्परः ॥ १५ ॥**

वाह्र आकारले युक्त भएको चतुरार्यसत्यको अर्थ, त्यहि तत्वको सोह्र आकारले जान्ने भइ, फेरी वीस आकारले युक्त संवोधिज्ञान अववोध गर्दै, सवैकुरा वुझ्नुहुने सर्वज्ञ हुनुहुन्छ ॥ १५ ॥

(१३४)

**अमेयबुद्धनिर्माण कायकोटिविभावकः ।**
**सर्वक्षणाभिसमयः सर्वचित्तक्षणार्थवित् ॥ १६ ॥**

असंख्य निर्माणकाय बुद्धहरूको प्रसारण गर्नु हुने । सबै मनको क्षण अववोध गर्दै सबै चित्तहरूको क्षणको अर्थ बुझ्नुहुने ॥ १६ ॥

(१३५)

**नानायाननयोपायजगदर्थविभावकः ।**
**यानत्रितयनिर्यातः एकयानफलेस्थितः ॥**

अनेक अनेक यानको उपायले जगतको अर्थ हित सम्पादन गर्नुहुने । तीन यानको देशना गरी, एक यानको फलमा स्थित हुनुहुन्छ ॥ १७ ॥

(१३६)

**क्लेशधातुविशुद्धात्मा कर्मधातुक्षयंकरः ।**
**ओघोदधिसमुत्तीर्णो योगकान्तारनिःसृतः ॥**

क्लेश धातु परिशोधन गरी कर्मधातु क्षय गर्नु भएको छ । फेरि क्लेशरूपी नदी पारगरी संयाजनको दुर्गबाट बाहिर आउनु भएको छ ॥ १८ ॥

(१३७)

**क्लेशोपक्लेशसंक्लेशसुप्रहीणसवासनः ।**
**प्रज्ञोपायमहाकरुणा अमोघजदर्थकृत् ॥**

क्लेश उपक्लेश संक्लेशको वासना समेतलाई अन्त गरी, प्रज्ञा तथा महाकरुणारूपी उपायद्वारा जगत प्राणीहरूलाई अचूकरूपले हित गर्नुहुन्छ ॥१९ ॥

(१३८)

**सर्वसंज्ञाप्रहीणार्थो विज्ञानार्थो निरोधधृक् ।**
**सर्वसत्त्वमनोविषयः सर्वसत्त्वमनोगतिः ॥ २० ॥**

सबै संज्ञाको कारण नाश गरी, विज्ञानको अर्थ निरोध गर्नु भएको छ । सबै प्राणीहरू नै आफ्नो मनको विषय भएकोले, सबै प्राणीको मनमा वस्नु भएको छ ॥ २० ॥

(१३९)

**सर्वसत्त्वमनोऽन्तस्थः तच्चित समतांगतः ।**
**सर्वसत्त्वमनोल्हादी सर्वसत्त्व मनोरतिः ॥ २१ ॥**

सबै प्राणीको मनमा बसी त्यही चित्तमा मिल्ने गरी बस्नु भएको छ । सबै प्राणीको मन सन्तोष पारी, सबै प्राणीको मन आनन्द गर्नु भएको छ ॥ २१ ॥

(१४०)

**सिद्धान्तोविभ्रमोपेतः सर्वभ्रान्तिविवर्जितः ।**
**निःसंदिग्धमतिस्त्र्यर्थः सर्वार्थस्त्रिगुणात्मकः ॥ २२ ॥**

सिद्धान्तमा कुनै पनि भ्रम नराखि, सबै प्रकारको भ्रान्ति लाइ हटाइ, तिन प्रकारले निःशंक भइ, सबै वस्तुमा यो तीन वटा गुण भएको अवबोध गर्दै ॥ २२ ॥

(१४१)

**पञ्चस्कन्धार्थस्त्रिकालः सर्वक्षणविभावकः ।**
**एकक्षणाभिसंबुद्धः सर्वबुद्धस्वभावधृक् ॥ २३ ॥**

तिनैकालमा पञ्चस्कन्धलाई आफ्नो लक्ष वनाउदै, सबै क्षणलाइ विभाग गरी एकै क्षणमा अभिसंवुद्ध हुनुभएको छ, सबै वुद्धहरूको स्वभाव धारण गर्नुभएको छ ॥ २३ ॥

(१४२)

**अनंगकायाग्र्यः कायकोटिविभावकः ।**
**अशेषरूपसन्दर्शी रत्नकेतुर्महामणि ॥**

अंग नभएको काय (शरीर) शरीर मध्ये उत्तम छ, शरीरको कोटी पर्यन्त विभाग गर्दै, अनेक अनेक रूप देखाई, रत्नकेतु मणिरत्न झै बस्नु भएको छ । ॥ २४ ॥

इति समताज्ञानगाथाः चतुर्विंशतिः ॥

(१४३)

**सर्वसंबुद्धबोद्धव्यो बुद्धबोधिरनुत्तरः ।**
**अनक्षरो मन्त्रयोनिर्महामन्त्रकुलत्रयः ॥ १ ॥**

सबै बुद्धहरूले बोधगरी लिनुभएको बुद्धबोधि अनुत्तर छ । अक्षर नभएको, मन्त्रको उत्पन्न हुने स्थान, महामन्त्रको तिनै कुल हो ॥ १ ॥

(१४४)

**सर्वमन्त्रार्थजनको महाविन्दुरनक्षरः ।**
**पञ्चाक्षरो महाशून्यो बिन्दुशून्यः षडक्षरः ॥**

सबै मन्त्रको अर्थ उत्पन्न गर्ने, महाविन्दु, अनक्षर हो, महाशून्य पञ्चाक्षर हो । विन्दु शून्य षडक्षर हो ॥ २ ॥

(१४५)

**सर्वाकारो निराकार षोडशार्धार्धबिन्दुधृक् ।**
**अकलः कलनातीतश्चतुर्थध्यानकोटिधृक् ॥ ३ ॥**

सबै आकारले युक्त, तर निराकार, सोह्र विन्दुको आधा आठ त्यसको आधा चार विन्दु धारण गर्दै । अंगप्रत्यंग नभई ,संख्या गणना अतित भएको, चतुर्थ ध्यानको शिखर धारण गर्नु भएको छ ॥ ३ ॥

(१४६)

**सर्वध्यानकलाभिज्ञः समाधिकुलगोत्रवित् ।**
**समाधिकायकायाग्र्यः सर्वसंभोग कायरात् ॥ ४ ॥**

सबै ध्यानको अंग बुझेर अभिज्ञा प्राप्त गर्दै, समाधिको कुल र गोत्रको विज्ञ भइ, समाधिवाट उत्पन्न उत्तम शरीर प्राप्त भई, सबै संभोगकाय का राजा हुनु हुन्छ ॥ ४ ॥

(१४७)

**निर्माणकायः कायाग्र्यो बुद्धनिर्माणवंशधृक् ।**
**वशदिग्विश्वनिर्माणो यथावज्जगदर्थकृत् ॥ ५ ॥**

निर्माणकाय भनेको काय मध्ये अग्र उत्तम (शरीर) हो, वुद्ध निर्माणको वंश लाइ धारण गर्दै, दश दिशामा अनेक अनेक निर्माणकाय निकाल्दै जगत प्राणीको हितार्थ जमले जे गर्नुपर्ने हो त्यस्तै गर्नुहुन्छ ॥ ५ ॥

(१४८)

**देवातिदेवो देवेन्द्रः सुरेन्द्रो दानवाधिपः ।**
**अमरेन्द्रः सुरगुरुः प्रमथः प्रमथेश्वरः ॥ ६ ॥**

देवताहरूको पनि देवेन्द्रको पनि देवता हुनुभएका, देव र दानवका अधिपति हुनुभई, मर्नै नपर्ने देवताहरुका स्वामि, देवताहरूको गुरु, महारकहरूको पनि गुरु तथा ईश्वर हुनुहुन्छ ॥ ६ ॥

(१४९)

**उत्तीर्ण भवकान्तारः एकशास्ता जगद्गुरुः ।**
**प्रख्यातो दशदिग्लोको धर्मदानपतिर्महान् ॥ ७ ॥**

भव संसारको जंगलवाट पार गरी जगतको एक मात्र शास्ता गुरु भइ, दश दिशाका लोकहरूमा समेत प्रख्यात भएका महान धर्मदाता हुनुहुन्छ ॥ ७ ॥

(१५०)

**मैत्रीसन्नाहसन्नद्धः करुणावर्मवर्मितः ।**
**प्रज्ञाखड्गधनुर्बाणः क्लेशज्ञानरणञ्जहः ॥ ८ ॥**

मैत्रीरूपी भावना ले सुसज्जित भइ, करुणाको कवच शरीरमा लगाई, प्रज्ञाको खड्ग र धनुषवाण समाई क्लेश अज्ञानको विषयलाई नाश गर्न हुन्छ ॥ ८ ॥

(१५१)

**मारारिमारजिद्वीरश्चतुर्मारभयान्तकृत् ।**
**सर्वमारचमूजेता संबुद्धो लोकनायकः ॥ ९ ॥**

मार शत्रुलाई दमन गरी मारजित गरी वीर हुनु हुन्छ, चतुर्मारको भयलाई नाश गर्न भएको छ, सवै मारसैन्यहरूलाई जितेर संवुद्ध लोकनायक हुनुभएको छ ॥ ९ ॥

(१५२)

**वन्द्यः पूज्योऽभिवाद्यश्च माननियश्च नित्यशः ।**
**अर्चनियतमो मान्यो नमस्यः परमो गुरुः ॥१० ॥**

वन्दनायोग्य, पूजा अभिवादन योग्य, सधै मान्न योग्य, राम्रोसग मान सत्कार तथा नमस्कार गर्न योग्य, परम उत्तम गुरु हुनहुन्छ ॥ १० ॥

(१५३)

**त्रैलोक्यैकक्रमगतिर्व्योमपर्यन्तविक्रमः ।**

**त्रैविद्यः श्रोत्रियः षडभिज्ञः षडनुस्मृत्तिः ॥ ११ ॥**

तीनै लोकमा एकै पटक अभ्यास गर्नुहुन्छ, आकाशको अन्त नभए भ्कै अनेक विवरणले अधिनमा राखी तीनै विधा सूचि शुद्ध यो ६ अभिज्ञा र ६ स्मृतिद्वारा वुद्ध पद प्राप्त गर्नुहुने ॥ ११ ॥

(१५४)

**बोधिसत्त्वो महासत्त्वो लोकातीतो महर्द्धिकः ।**

**प्रज्ञापारमितानिष्ठः प्रज्ञातत्त्वमागतः ॥ १२ ॥**

वोधिसत्व महासत्व महाकृद्धिसम्पन्न, लोकवाट पार भइसकेका प्रज्ञापारमिताको अन्त पुगेका, प्रज्ञापारमिताको तत्व नै प्राप्त गर्नु भएका ॥ १२ ॥

(१५५)

**आत्मवित् परवित् सर्वः सर्वियो हृग्रपुद्गलः ।**

**सर्वोपमामतिक्रान्त ज्ञेयो ज्ञानधिपः परः ॥ १३ ॥**

आत्नज्ञान र परज्ञान सवै विद्या जानेका, सबै प्राणीलाई हित गर्ने उत्तम पुद्गल हुनुहुन्छ, सवै उपमा पार गरी ज्ञेय र ज्ञानको उत्तम अधिपति हुनु हुन्छ ॥ १३ ॥

(१५६)

**धर्मदानपतिः श्रेष्ठश्चतुर्मुद्रार्थदेशकः ।**

**पर्युपास्यतमो जगतां निर्याणत्रययायिनाम् ॥ १४ ॥**

धर्मको दानपति भई, चतुर्मुद्राको अर्थको श्रेष्ठ देशक भइ, जगतको उत्तम उपास्य ठाउ हो तिन प्रकारको मोक्षको ज्ञान खोज्नेहरूको लागी पनि ॥ १४ ॥

(१५७)

**परमार्थविशुद्धश्रीस्त्रैलोक्य सुभगो महान् ।**

**सर्वसम्पतकरः श्रीमान् मञ्जुश्रीः श्रीमतां वरः ॥ १५ ॥**

परमार्थरूपले विशुद्ध श्रीसम्पत प्राप्त, तीनै लोकमा जोडा नभएका महा भाग्यशाली श्रीयुक्त सवै सम्पति आर्जन गर्नुहुने मञ्जुश्री उत्तम श्री शोभाले युक्त हुनुहुन्छ ॥ १५ ॥

इति कृत्यानुष्ठानज्ञानगाथा पंचदश ॥

(१५८)

**नमस्ते वरद वज्राग्र भूतकोटे नमोऽस्तुते ।**
**नमस्ते शून्यतागर्भ बुद्धबोधे नमोऽस्तुते ॥ १ ॥**

वरदान दिनु हुने मध्ये तपाई उत्तम वज्रलाई नमस्कार, सम्यक यथार्थ पर्यन्त हुनुभएका तपाईलाई नमस्कार, शून्यको गर्भवाट उत्पन्न हुनुभएका तपाईलाई नमस्कार, वुद्धपद महावोधि प्राप्त गर्नुहुने तपाईलाई नमस्कार ॥ १ ॥

(१५९)

**बुद्धराग नमस्तेऽस्तु बुद्धकाम नमो नमः ।**
**बुद्धप्रीति नमस्तुभ्यं बुद्धमोद नमो नमः ॥ २ ॥**

वुद्धको राग गर्नु हुने तपाईलाइ नमस्कार, वुद्ध काम गर्नु हुने तपाईलाई नमस्कार, वुद्ध प्रिती गर्नुहुने तपाईलाई नमस्कार, वुद्धलीला गर्नुहुने तपाईलाइ नमस्कार ॥ २ ॥

(१६०)

**बुद्धस्मित नमस्तुभ्यं बुद्धहास नमो नमः ।**
**बुद्धवाच नमस्तुभ्यं बुद्धभाव नमो नमः ॥ ३ ॥**

मुसुमुसु हाँसी रहनुहुने तपाईलाई नमस्कार, हसिलो मुहार हुनुभएका तपाईलाई नमस्कार, वुद्ध वाणी गर्नुहुने तपाईलाई नमस्कार, वुद्ध चित्त हुनुभएका तपाईलाई वन्दना गरी नमस्कार । ॥ ३ ॥

(१६१)

**अभवोद्भव नमस्तुभ्यं नमस्ते बुद्धसम्भव ।**
**गगनोद्भव नमस्तुभ्यं नमस्ते ज्ञानसम्भवः ॥ ४ ॥**

अभव (शून्य) वाट उत्पत्ति हुनु भएका तपाईलाई नमस्कार । सम्यक सम्वुद्ध हुनुभएका तपाईलाई नमस्कार, आकाशवाट उत्पत्ति हुनुभएका तपाईलाई नमस्कार, ज्ञानवाट उत्पत्ति हुनुभएका तपाईलाई नमस्कार ॥ ४ ॥

(१६२)

**मायाजाल नमस्तुभ्यं नमस्ते बुद्धनाटक ।**
**नमस्ते सर्वसर्वेभ्यो ज्ञानकाय नमोस्तुते ॥ ५ ॥**

मायाजाल तपाईलाई नमस्कार, बुद्ध लिला देखाउनुहुने तपाईलाइ नमस्कार, सबै सवैका लागी  तपाईलाई नमस्कार, ज्ञानकाय तपाईलाई नमस्कार गर्दछु ॥ ५ ॥

इति पञ्चतथागतज्ञानगाथा: पञ्च ॥

# मन्त्रविन्यासः ।

**ओं सर्वधर्माभावस्वभावविशुद्धवज्रः अ आ अं अः प्रकृति परिशुद्धाः सर्वधर्माः यदुत सर्वतथागत ज्ञानकायस्य मञ्जुश्री परिशुद्धितामुपादायेति ।**
**अ आः सर्वतथागतहृदयं हर हर ओं हुं ह्रीः ।**
**भगवन् ज्ञानमूर्ति ज्ञानमूर्ति वागीश्वर महावाच सर्वधर्म गगनामलसुपरि शुद्धधर्मधातुज्ञानगर्भ आः ।**

इति मन्त्रविन्यासः ।

# उपसंहार गाथा पञ्च

(१६३)

**अथ वज्रधरः श्रीमान् हृष्टतुष्टः कृताञ्जली ।**
**प्रणम्य नाथं संबुद्धं भगवन्तं तथागतम् ॥ १ ॥**

त्यसपछि श्रीमान् वज्रधर हर्ष हुनुभई हात विन्ति गरी नाथ संवुद्ध भगवान तथागत·अर्हत सम्यक् सम्वुद्धलाई नमस्कार गर्दै ॥ १ ॥

(१६४)

**अन्यैश्च बहुविधैर्नाथैर्गुह्येन्द्रै वज्रपाणिभिः ।**
**स सार्धं क्रोधराजानैः प्रोवाचोच्चैरिदं वचः ॥ २ ॥**

त्यसपछि नाथ गुह्याधिपति क्रोधराज वज्रपाणीको (गण) अनेक र अरु पनि (सहित) एकजुट भई सवैले स्तोत्र गरी यो गाथा पाठ गरी विन्ति गरे ॥ २ ॥

(१६५)

**अनुमोदामहे नाथ साधु साधु सुभाषितम् ।**
**कृतोऽस्माकं महानर्थः सम्यक् सम्वोधिप्रापकः ॥ ३ ॥**

हे नाथ ! हामी सवैले सुनी हर्षमान (अनुमोदन गर्छौ) साधु साधु भनी साधुकार दिएका छौं हामीहरूले सम्यकसंवोधिलाइ महान अर्थकारी लक्ष प्राप्ति वनाएका छौं ॥ ३ ॥

(१६६)

**जगतश्चास्यानाथस्य विमुक्तिफलकांक्षिणः ।**
**श्रेयो मार्गो विशुद्धोयं मायाजालनयोदितः ॥ ४ ॥**

जगतमा नाथ नभई अनाथ भइरहेकाहरू, विमुक्ति फल इच्छा गर्नेहरूलाइ, मायाजाल नियम वताउनु भयो । यो विशुद्ध असल मार्ग हो ॥ ४ ॥

(१६७)

**गम्भीरोदारवैपुल्य महार्थो जगदर्थकृत ।**
**वुद्धानांविषयोह्येषः सम्यक्संबुद्धदेशितः ॥ ५ ॥**

गम्भीर, उदार तथा विपुल महान अर्थकारी, जगत प्राणीको हितको लागी यो वुद्धहरूको विषय संवुद्ध सवैले देशना गर्नु भएको हो ॥ ५ ॥

इति भगवतो मंजुश्रीज्ञानसत्वस्य परमार्थी नामसंगीति भगवान्तथागत-शाक्यमुनिर्भाषिता समाप्त ।